# महिला विरुद्धका सबै प्रकारका भेदभाव उन्मूलन गर्ने सम्बन्धी महासन्धि

(नेपालले २२ अप्रिल १९९१ तद अनुसार ५ चैत २०४८ मा अनुमोदन गरेको)

**१८ डिसेम्बर १९७९ मा महासभाद्धारा पारित प्रस्ताव ३४/१८० बमोजिम ग्रहण गरी हस्ताक्षर, अनुमोदन तथा सम्मिलनकोलागि खुला गरिएको**

**लागू भएको मितिः महासन्धिको धारा २७(१) अनुसार, ३ सेप्टेम्बर १९८१ तद अनुसार १८ भाद्र २०३८**

यस महासन्धिका पक्ष राष्ट्रहरु,

संयुक्त राष्ट्र संघको वडापत्रले मौलिक मानव अधिकार, मानव मात्रको प्रतिष्ठा र मूल्य तथा पुरुष र महिलाको समान अधिकारप्रतिको विश्वासलाई पुनःपुष्टि गरेको कुरा उल्लेख गर्दै,

मानव अधिकार सम्बन्धी विश्वब्यापी घोषणापत्रले भेदभावको अग्राह्यताको सिद्धान्तलाई पुष्टि गरेको, सबै मानिसहरु स्वतन्त्र जन्मेका, प्रतिष्ठा र अधिकारमा समान भएका तथा प्रत्येक व्यक्तिलाई घोषणापत्रमा उल्लिखित सम्पूर्ण अधिकार तथा स्वतन्त्रताहरु लिङ्गमा आधारित भेदभाव लगायत कुनै पनि किसिमको भेदभाव विना उपभोग गर्न पाउने अधिकार भएको घोषणा गरेको कुरा उल्लेख गर्दै,

मानव अधिकार सम्बन्धी अन्तर्राष्ट्रिय प्रतिज्ञापत्रहरुका पक्ष राष्ट्रहरुको सम्पूर्ण आर्थिक, सामाजिक, सांस्कृतिक, नागरिक र राजनैतिक अधिकारहरु पुरुष र महिलाले समान रुपले उपभोग गर्न पाउने अधिकार सुनिश्चित गर्ने दायित्व रहेको कुरा उल्लेख गर्दै,

संयुक्त राष्ट्र संघ र विशिष्टिकृत निकायहरुको तत्वावधान अन्तरगत सम्पन्न पुरुष र महिलाको अधिकारको समानतालाई प्रवर्द्धन गर्ने अन्तर्राष्ट्रिय महासन्धिहरुलाई विचार गर्दै,

संयुक्त राष्ट्र संघ र विशिष्टिकृत निकायहरुले पारित गरेका पुरुष र महिलाको अधिकारको समानतालाई प्रवर्द्धन गर्ने प्रस्ताव, घोषणापत्र र सिफारिसहरु समेत उल्लेख गर्दै,

यी विभिन्न लिखतहरुको वावजूद महिला विरुद्ध व्यापक भेदभाव अझै पनि कायम रहिरहेको कुरा प्रति चिन्तित हुंदै,

महिला विरुद्धको भेदभावले अधिकारहरुको समानताको सिद्धान्त र मानव प्रतिष्ठाप्रतिको सम्मानको उल्लंघन गर्ने, पुरुषसंग समानताको आधारमा आफ्नो मुलुकको राजनैतिक, सामाजिक, आर्थिक तथा सांस्कृतिक जीवनमा महिलाको सहभागितामा व्यवधान उत्पन्न गर्ने, समाज र परिवारको समुन्नतिको

विकासमा अवरोध खडा गर्ने तथा आफ्नो देश र मानवताको सेवाको लागि महिलाको सामर्थ्यताको पूर्ण विकासलाई अझ वढी कठिन बनाउने कुरालाई पुन:संस्मरण गर्दै,

गरीवीको अवस्थामा खाद्यान्न, स्वास्थ्य, शिक्षा, तालीम एवं रोजगारीका अवसरहरुका साथै अन्य आवश्यकताहरुमा महिलाको न्यूनतम पहुँच रहेको कुराप्रति चिन्तित हुँदै,

समता र न्यायमा आधारित नयां अन्तर्राष्ट्रिय आर्थिक व्यबस्थाको स्थापनाले पुरुष र महिला बीचको समानता प्रवर्द्धन गर्नमा महत्वपूर्ण योगदान पुराउनेछ भन्ने कुरामा विश्वस्त भएर,

रंगभेद, सबै प्रकारका जातिवाद, जातिगत भेदभाव, उपनिवेशवाद, नव उपनिवेशवाद, अतिक्रमण, वैदेशिक कब्जा र आधिपत्य एवं राष्ट्रहरुको आन्तरिक मामिलामा हस्तक्षेप जस्ता कुराको उन्मूलन पुरुष तथा महिलाको अधिकारको पूर्ण उपभोगकोलागि अत्यावश्यक छ भन्ने कुरामा जोड दिंदै,

अन्तर्राष्ट्रिय शान्ति र सुरक्षाको सुदृढीकरण, अन्तर्राष्ट्रिय तनावको सिथिलता, जस्तोसुकै सामाजिक तथा आर्थिक व्यवस्था भएपनि राष्ट्रहरु बीचको आपसी सहयोग, सामान्य र पूर्ण निशस्त्रीकरण खासगरी कडा र प्रभावकारी अन्तर्राष्ट्रिय नियन्त्रण अन्तर्गत आणविक निशस्त्रीकरण, राष्ट्रहरु बीचको सम्बन्धमा न्याय, समानता र आपसी हितको सिद्धान्तको पुष्टि र वैदेशिक तथा औपनिवेशिक आधिपत्यमा रहेका र वैदेशिक कब्जामा रहेका जनताहरुको आत्मनिर्णयको अधिकार तथा स्वतन्त्रताको प्राप्तीका अतिरिक्त राष्ट्रिय सार्वभौमसत्ता एवं क्षेत्रीय अखण्डताको सम्मानले सामाजिक उन्नति र विकासलाई प्रवर्द्धन गर्ने र फलत यसले पुरुष र महिला बीचमा पूर्ण समानताको प्राप्तीमा योगदान पुऱ्याउने छ भन्ने कुरालाई पुष्टि गर्दै,

कुनै पनि राष्ट्रको पूर्ण एवं सर्वाङ्गिण विकास, विश्वको कल्याण र शान्तिका उद्देश्यकालागि पुरुष सरह सबै क्षेत्रहरुमा महिलाको अधिकतम सहभागिता आवश्यक पर्ने कुरामा विश्वस्त भएर,

परिवारको कल्याण र समाजको विकासमा महिलाहरुको हालसम्म पूर्ण रुपमा स्विकार नगरिएको ठूलो योगदान, मातृत्वको समाजिक महत्व तथा परिवारमा र बालबालिकाको पालनपोषणमा बाबु आमा दुबैको भूमिकाको विचार गर्दै र महिलाको सन्तानोत्पादनमा रहेको भूमिका भेदभावकालागि आधार हुनु हुँदैन तर बालबालिका हुर्काउने कार्यकालागि महिला तथा पुरुष र समग्र समाज बीच उत्तरदायित्वको हिस्सेदारी आवश्यक हुन्छ भन्ने कुरा दृष्टिगत गर्दै,

महिला र पुरुष बीच पूर्ण समानता प्राप्त गर्न समाजमा र परिवारमा हुने महिला तथा पुरुषहरुको परम्परागत भूमिकामा परिवर्तन आवश्यक भएको कुरामा सजग हुँदै,

महिला विरुद्धको सबै प्रकारका भेदभाव उन्मूलन सम्बन्धी घोषणापत्रमा उल्लिखित सिद्धान्तहरु कार्यान्वयन गर्न र सो प्रयोजनकालागि कुनै पनि प्रकार र प्रकृतिमा हुने त्यस्तो भेदभावको अन्त्य गर्न आवश्यक उपायहरु अवलम्वन गर्न कटिवद्द भई,

देहायका कुरामा सहमत भएका छन्:

**भाग १**

**धारा १**

यस महासन्धिको प्रयोजनको लागि, "महिला विरुद्धको भेदभाव" भन्नाले पुरुष र महिलाहरुको जस्तोसुकै वैवाहिक स्थिति भए तापनि राजनैतिक, आर्थिक, सामाजिक, सांस्कृतिक, नागरिक र अन्य कुनै पनि क्षेत्रमा पुरुष र महिला बीच समानताका आधारमा महिलाहरुद्धारा मानव अधिकार तथा मौलिक स्वतन्त्रताको मान्यता, उपभोग वा प्रयोग रद्द गर्ने वा त्यसमा आघात पार्ने प्रभाव वा उद्देश्य रहेको लिङ्गका आधारमा गरिने कुनै पनि विभेद, निष्काशन वा प्रतिवन्ध सम्फनु पर्छ।

**धारा २**

पक्ष राष्ट्रहरु महिला विरुद्धका सबै प्रकारका भेदभावलाई निन्दा गर्दै सबै उपयुक्त उपायहरु अपनाई र विना ढिलाई महिला विरुद्ध हुने भेदभाव उन्मूलन गर्ने नीति अवलम्बन गर्न मन्जुर गर्दछन् र यस उद्देश्यका लागि देहायका काम गर्न कवूल गर्दछन्:

(क) पुरुष र महिला बीचको समानताको सिद्धान्तलाई आफ्नो राष्ट्रिय संविधान वा अन्य उपयुक्त कानूनमा अफै समावेश गरिनसकिएको भए यस सिद्धान्तलाई त्यस्तो संविधान वा कानूनमा समावेश गर्ने तथा कानून र अन्य उपयुक्त माध्यमद्वारा यस सिद्धान्तको व्यवहारिक प्राप्ति सुनिश्चित गर्ने,

(ख) महिला विरुद्धको भेदभाव निषेध गर्ने कानूनी र अन्य उपायहरु एवं उपयुक्त भएको अवस्थामा दण्ड सजायको व्यवस्था समेत अवलम्वन गर्ने,

(ग) पुरुष सरह समान आधारमा महिलाका अधिकारहरुको कानूनी संरक्षणको व्यवस्था गर्ने तथा सक्षम राष्ट्रिय न्यायाधिकरण र अन्य सार्वजनिक संस्थाहरु मार्फत भेदभावको कुनै पनि कार्य विरुद्द महिलाको प्रभावकारी संरक्षण सुनिश्चित गर्ने,

(घ) महिला विरुद्धको भेदभावको कुनै पनि कार्य वा व्यवहारमा सरिक नभई अलग रहने तथा सार्वजनिक अधिकारी र संस्थाहरुले यस दायित्व अनुरुप कार्य गर्नेछन् भन्ने कुरा सुनिश्चित गर्ने,

(ङ) कुनै पनि व्यक्ति, संस्था वा उद्योगबाट हुने महिला विरुद्धको भेदभाव उन्मूलन गर्न सम्पूर्ण उपयुक्त उपायहरु अवलम्बन गर्ने,

(च) महिला विरुद्धको भेदभाव सिर्जना गर्ने प्रचलित कानून, नियम, परम्परा तथा ब्यबहारहरु परिवर्तन वा उन्मुलन गर्न कानूनी व्यबस्था लगायतका सम्पूर्ण उपयुक्त उपायहरु अवलम्बन गर्ने,

(छ) महिला विरुद्धको भेदभाव सिर्जना गर्ने सम्पूर्ण राष्ट्रिय दण्ड व्यबस्थाहरु खारेज गर्ने ।

**धारा ३**

पुरुष सरह महिलाहरुलाई मानव अधिकार तथा मौलिक स्वतन्त्रताहरुको प्रयोग तथा उपभोगको प्रत्याभूति दिने उद्देश्यकालागि महिलाको पूर्ण विकास र समुन्नति सुनिश्चित गर्न पक्ष राष्ट्रहरुले सबै क्षेत्र खासगरी राजनैतिक, सामाजिक, आर्थिक र सांस्कृतिक क्षेत्रहरुमा कानूनी व्यवस्था लगायतका सम्पूर्ण उपयुक्त उपायहरु अवलम्वन गर्नेछन् ।

**धारा ४**

१. पुरुष र महिला बीचको वास्तविक समानतालाई तीव्र पार्ने उद्देश्यले पक्ष राष्ट्रहरुबाट ग्रहण गरिएका अस्थायी विशेष उपायहरुलाई प्रस्तुत महासन्धिले परिभाषा गरे बमोजिमको भेदभाव मानिने छैन । तर परिणामस्वरुप यस्ता उपायहरुले कुनै पनि हालतमा असमान वा पृथक मापदण्डहरुलाई कायमै रहन दिनु हुँदैन। अवसर र व्यबहारको समानताको उद्देश्य हासिल भएपछि यी उपायहरुलाई निरन्तरता दिईने छैन ।

२. मातृत्वको संरक्षण गर्ने उद्देश्यले पक्ष राष्ट्रहरुबाट ग्रहण गरिएका यस महासन्धिमा उल्लिखित उपायहरु लगायतका विशेष उपायहरुलाई भेदभावपूर्ण मानिने छैन ।

**धारा ५**

पक्ष राष्ट्रहरुले देहायको प्रयोजनकोलागि सम्पूर्ण उपयुक्त उपायहरु अवलम्बन गर्नेछन्:

(क) कुनै एक लिंगको लघुता वा वरिष्ठताको धारणामा वा पुरुष र महिलाकालागि रुढीगत भूमिकामा आधारित दुराग्रह तथा परम्परागत एवं अन्य सबै व्यबहारहरु उन्मूलन गर्ने उद्देश्यले पुरुष र महिलाको व्यबहारको सामाजिक तथा सांस्कृतिक ढांचामा परिवर्तन गर्ने,

(ख) हर अवस्थामा बालबालिकाको हितनै प्राथमिक चासोको बिषय भएको कुरा बुझ्दै पारिवारिक शिक्षाले सामाजिक कार्यको रुपमा मातृत्वको सम्बन्धमा उचित समझ र आफना बालबालिकाको पालनपोषण र विकासमा पुरुष र महिलाको साझा उत्तरदायित्वको मान्यता समावेश गरेको सुनिश्चित गर्ने ।

**धारा ६**

पक्ष राष्ट्रहरुले महिलाको सबै प्रकारको वेचविखन तथा महिलाको वेश्यावृत्तिको शोषण दमन गर्न कानूनी व्यबस्था लगायतका सम्पूर्ण उपयुक्त उपायहरु अवलम्वन गर्नेछन् ।

**भाग २**

**धारा ७**

पक्ष राष्ट्रहरुले मुलुकको राजनैतिक र सामाजिक जीवनमा महिला विरुद्धको भेदभाव उन्मूलन गर्न सम्पूर्ण उपयुक्त उपायहरु अवलम्वन गर्ने र खासगरी, पुरुष सरह महिलाकालागि देहायका अधिकारहरु सुनिश्चित गर्नेछन्:

(क) सबै निर्वाचन र सार्वजनिक जनमतसंग्रहहरुमा मतदान गर्ने अधिकार र सार्वजनिक रुपमा निर्वाचन हुने निकायहरुमा निर्वाचनको लागि योग्य हुने अधिकार,

(ख) सरकारी नीतिको तर्जुमा र कार्यान्वयनमा सहभागि हुने तथा सार्वजनिक पद धारण गर्ने र सरकारका सबै तहहरुमा हुने सार्वजनिक कार्यहरु सम्पादन गर्ने अधिकार,

(ग) मुलुकको सार्वजनिक तथा राजनैतिक जीवनसँग सम्बन्धित गैर-सरकारी संघ संस्थाहरुमा भाग लिने अधिकार ।

**धारा ८**

पक्ष राष्ट्रहरुले पुरुष सरह र कुनै भेदभाव विना अन्तराष्ट्रिय स्तरमा आफ्नो सरकारको प्रतिनिधित्व गर्ने र अन्तर्राष्ट्रिय संगठनहरुको कार्यमा सहभागी हुने अवसर महिलाको लागि सुनिश्चत गर्न सम्पूर्ण उपयुक्त उपायहरु अवलम्वन गर्नेछन् ।

**धारा ९**

१. पक्ष राष्ट्रहरुले महिलालाई पुरुष सरह आफनो राष्ट्रियता प्राप्त गर्ने, कायम राख्ने वा परिवर्तन गर्ने समान अधिकार प्रदान गर्नेछन् । तिनीहरुले खासगरी विदेशीसँग विवाह गरेको कारणबाट वा विवाहको अवधिमा पतिले राष्ट्रियता परिवर्तन गरेको कारणले पत्नीको राष्ट्रियता स्वतः परिवर्तन नहुने र निजलाई राष्ट्रियता विहिन नबनाईने वा पतिकै राष्ट्रियता लिन वाध्य नपारिने कुरा सुनिश्चित गर्नेछन् ।

२. पक्ष राष्ट्रहरुले महिलालाई आफ्ना बालबालिकाको राष्ट्रियताको सम्बन्धमा पुरुष सरहको समान अधिकार प्रदान गर्नेछन् ।

**भाग ३**

**धारा १०**

पक्ष राष्ट्रहरुले महिलालाई शिक्षाको क्षेत्रमा पुरुष सरहको समान अधिकार सुनिश्चित गर्ने र खासगरी, महिला र पुरुषको समानताको आधारमा देहायका कुराहरु सुनिश्चित गर्ने उद्देश्यले महिला विरुद्धको भेदभाव उन्मूलन गर्न सम्पूर्ण उपयुक्त उपायहरु अवलम्वन गर्नेछन्ः

(क) वृत्ति तथा व्यबसायिक मार्गदर्शन, अध्ययनमा पहुंच र ग्रामीण तथा शहरी क्षेत्रमा अवस्थित सबै प्रकारका शिक्षण संस्थाहरुबाट उपाधि प्राप्त गर्नको लागि समान अवस्थाहरु यो समानता पूर्व विद्यालय, साधारण, प्राविधिक, व्यबसायिक तथा उच्च प्राविधिक शिक्षाका साथै सबै प्रकारका व्यबसायिक तालीमहरुका हकमा सुनिश्चित गरिनेछ,

(ख) समान पाठ्यक्रम, समान परीक्षा, समान मापदण्डको योग्यता भएका प्रशिक्षण कर्मचारी र विद्यालय परिसर तथा समान गुणस्तरको उपकरणमा पहुँच,

(ग) पुरुष र महिलाको भूमिकाको रुढीवादी अवधारणा उन्मूलन गर्ने लक्ष्य हासिल गर्न सहयोगी हुने सह-शिक्षा तथा अन्य किसिमका शिक्षालाई प्रोत्साहित गर्दै र खासगरी पाठ्यपुस्तकहरु तथा विद्यालय कार्यक्रमहरुमा परिमार्जन र शिक्षण विधिहरु ग्रहण गरी सबै तह र प्रकारको शिक्षामा रुढीवादी अवधारणाको उन्मूलन,

(घ) छात्रवृत्ति तथा अन्य अध्ययन अनुदानबाट फाईदा लिनको लागि समान अवसर,

(ङ) प्रौढ शिक्षा तथा कार्यमूलक साक्षरता कार्यक्रमहरु लगायतका निरन्तर शिक्षण कार्यक्रमहरु, खासगरी पुरुष र महिलाका बीचमा विद्यमान शैक्षिक अन्तरलाई जतिसक्दो छिटो घटाउदै जाने लक्ष्य रहेका कार्यक्रमहरुमा पहुँचको समान अवसर,

(च) पढाई छाड्दै जाने महिला विद्यार्थीको दरमा कमी ल्याउने र पढाई अधुरो हुँदै विद्यालय छाडेका बालिका तथा महिलाहरुको निमित्त कार्यक्रमहरुको आयोजना,

(छ) खेलकूद तथा शारीरिक शिक्षामा सक्रिय रुपमा सहभागि हुन पाउने समान अवसर,

(ज) परिवार नियोजन सम्बन्धी सूचना र सल्लाह लगायत परिवारको स्वास्थ्य र कल्याण सुनिश्चित गर्न सहायक हुने विशेष शैक्षिक सूचनामा पहुंच ।

**धारा ११**

१. पक्ष राष्ट्रहरुले पुरुष र महिलाको समानताको आधारमा समान अधिकारहरु, खासगरी देहायका अधिकारहरु, सुनिश्चित गर्ने उद्देश्यले रोजगारीको क्षेत्रमा महिला विरुद्दको भेदभाव उन्मूलन गर्न सम्पूर्ण उपयुक्त उपायहरु अवलम्वन गर्नेछन् ।

(क) सम्पूर्ण मानव जातिको नैसर्गिक अधिकारको रुपमा काम गर्ने अधिकार,

(ख) रोजगारीका सम्बन्धमा छनौटको निमित्त समान मापदण्डहरुको प्रयोग लगायत रोजगारीका समान अवसरको अधिकार,

(ग) पेशा र रोजगारीको स्वतन्त्र रुपमा छनौट गर्ने अधिकार, पदोन्नति, सेवाको सुरक्षा वा सेवाका सबै शर्तहरु र सुविधाहरुको अधिकार, शिक्षुता तालीम, उच्च व्यवसायिक तालीम र समयगत तालीम लगायतका व्यवसायिक तालीम तथा पुनः तालीम पाउने अधिकार,

(घ) समान सुविधा सहितको समान पारिश्रमिक र समान मूल्यको कामका सम्बन्धमा समान व्यवहार एवं कामको गुणस्तरको मूल्यांकनमा समान व्यवहारको अधिकार,

(ङ) खासगरी अवकाश, वेरोजगारी, विरामी, दुर्वलता, वृद्धावस्था र कामका लागि अन्य असक्षमताका अवस्थाहरुमा सामाजिक सुरक्षाको अधिकार एवं तलवी विदाको अधिकार,

(च) स्वास्थ्य सुरक्षाको अधिकार एवं पुनरुत्पादन कार्यको सुरक्षा लगायत कार्यगत अवस्थामा सुरक्षाको अधिकार ।

२. विवाह वा मातृत्वको आधारमा हुने महिला विरुद्धको भेदभाव रोक्न तथा उनीहरुको काम गर्ने पाउने प्रभावकारी अधिकार सुनिश्चित गर्न पक्ष राष्ट्रहरुले निम्नलिखित कार्यहरु गर्न उपयुक्त उपायहरु अवलम्वन गर्नेछन्:

(क) गर्भवती भएको वा सुत्केरी विदाको कारणले हुने बर्खास्ती तथा वैवाहिक स्थितिको आधारमा वर्खासीमा गरिने भेदभावमा दण्ड सजाय समेत गर्ने गरी प्रतिवन्ध लगाउने,

(ख) अघिल्लो रोजगारी वा जेष्ठता वा सामाजिक भत्ताबाट वञ्चित हुन नपर्ने गरी पूरा तलव सहितको वा सोही सरहको सामाजिक फाइदाहरु सहितको प्रसूति विदाको व्यबस्था गर्ने,

(ग) कार्यको उत्तरदायित्व र सार्वजनिक जीवनमा सहभागितासंगै पारिवारिक दायित्व समायोजन गर्न बाबुआमालाई सक्षम बनाउन आवश्यक सहयोगी सामाजिक सेवाहरुको व्यबस्था गर्न प्रोत्साहन गर्ने, र खासगरी बालस्याहार सुविधाहरुको संजालको स्थापना र विकास प्रवर्द्धन गर्ने,

(घ) गर्भवती अवस्थाका महिलालाई हानिकारक प्रमाणित भएका किसिमका कामबाट विशेष संरक्षण प्रदान गर्ने ।

३. यस धारामा समाविष्ट विषयहरुसँग सम्बन्धित संरक्षणात्मक कानूनलाई वैज्ञानिक र प्रविधिगत ज्ञानको आधारमा आवधिक रुपमा पुनरावलोकन गरिने र आवश्यकता अनुसार संशोधन, खारेज वा विस्तार गरिनेछ ।

**धारा १२**

१. पक्ष राष्ट्रहरुले पुरुष र महिलाको समानताको आधारमा परिवार नियोजनसँग सम्बन्धित सेवाहरु लगायत स्वास्थ्य स्याहार सेवाहरुमा पहुंच सुनिश्चित गर्न स्वास्थ्य सेवाको क्षेत्रमा महिला विरुद्धको भेदभाव उन्मूलन गर्न सम्पूर्ण उपयुक्त उपायहरु अवलम्वन गर्नेछन् ।

२. यस धाराको प्रकरण १ मा जुनसुकै कुरा लेखिएको भए तापनि पक्ष राष्ट्रहरुले महिलालाई गर्भवती, प्रसूति र प्रसूति पश्चातको अवधिमा उपयुक्त सेवाहरु र आवश्यक भएका वखत निशुल्क सेवा एवं गर्भवती र दूध ख्वाउने अवधिमा पर्याप्त पोषण समेत उपलब्ध भएको सुनिश्चित गर्नेछन् ।

**धारा १३**

पक्ष राष्ट्रहरुले पुरुष र महिलाको समानताको आधारमा समान अधिकारहरु खासगरी देहायका अधिकारहरु सुनिश्चित गर्ने उद्देश्यले आर्थिक तथा सामाजिक जीवनका अन्य क्षेत्रहरुमा महिला विरुद्दको भेदभाव उन्मूलन गर्न सम्पूर्ण उपयुक्त उपायहरु अवलम्वन गर्नेछन्:

(क) परिवारिक लाभको अधिकार,

(ख) बैंक ऋण, धितो बन्धकी वा अन्य प्रकारका वित्तीय ऋण लिने अधिकार,

(ग) मनोरन्जनात्मक कृयाकलापहरु, खेलकूद र सांस्कृतिक जीवनका सबै पक्षहरुमा सहभागि हुने अधिकार ।

**धारा १४**

१. पक्ष राष्ट्रहरुले ग्रामीण महिलाहरुले सामना गर्नु परेका खास समस्याहरु र ग्रामीण महिलाहरुले आफ्नो परिवारको आर्थिक जीविकोपार्जनमा निर्वाह गर्ने महत्वपूर्ण भूमिकालाई उन्नतिमा पुऱ्याएको योगदान एवं अर्थतन्त्रको गैर मौद्रिक क्षेत्रमा उनीहरुको कामलाई दृष्टिगत गर्नेछन् र प्रस्तुत महासन्धिका ब्यवस्थाहरु ग्रामीण क्षेत्रका महिलाहरुको हकमा लागू भएको सुनिश्चित गर्न सम्पूर्ण उपयुक्त उपायहरु अवलम्वन गर्नेछन् ।

२. पक्ष राष्ट्रहरुले पुरुष र महिलाको समानताको आधारमा ग्रामीण महिलाहरु ग्रामीण विकासमा सहभागी भएको र त्यसबाट लाभान्वित भएको सुनिश्चित गर्न ग्रामिण क्षेत्रका महिला विरुद्धको भेदभाव उन्मूलन गर्न सम्पूर्ण उपयुक्त उपायहरु अवलम्वन गर्ने र खासगरी त्यस्ता महिलालाई निम्नलिखित अधिकारहरु सुनिश्चित गर्नेछन्:

(क) सबै तहका विकास योजनाहरुको विस्तार र कार्यान्वयनमा सहभागी हुने अधिकार,

(ख) परिवार नियोजन सम्बन्धी सूचना, सल्लाह र सेवा लगायतका पर्याप्त स्वास्थ्य हेरचाह सुविधामा पहुंचको अधिकार,

(ग) सामाजिक सुरक्षा कार्यक्रमहरुबाट प्रत्यक्ष फाईदा लिने अधिकार,

(घ) उनीहरुको प्राविधिक दक्षता अभिवृद्धि गर्न कार्यमूलक साक्षरता लगायत सबै प्रकारका औपचारिक तथा अनौपचारिक तालीमहरु र शिक्षा एवं, अन्य कुराका अतिरिक्त, सबै सामूदायिक तथा विस्तारित सेवाहरुको लाभ प्राप्त गर्ने अधिकार,

(ङ) रोजगारी वा स्वरोजगारी मार्फत आर्थिक अवसरहरुमा समान पहुँच प्राप्त गर्नको लागि स्वावलम्वी समूह तथा सहकारीहरु गठन गर्ने अधिकार,

(च) सम्पूर्ण सामुदायिक कृयाकलापहरुमा भाग लिने अधिकार,

(छ) कृषि कर्जा तथा ऋण, बजार सुविधाहरु, उपयुक्त प्रविधि र भूमिमा समान व्यबहार, कृषिजन्य सुधार एवं भूमिको पुनःव्यवस्था योजनामा पहुँच प्राप्त गर्ने अधिकार,

(ज) खासगरी आवास, सरसफाई, विद्युत, खानेपानी, यातायात तथा संचारका सम्बन्धमा पर्याप्त जीवनयापनका अवस्थाहरुको उपभोग गर्ने अधिकार ।

**भाग ४**

**धारा १५**

१. पक्ष राष्ट्रहरुले महिलाहरुलाई कानूनको दृष्टिमा पुरुष सरहको समानता प्रदान गर्नेछन् ।

२. पक्ष राष्ट्रहरुले महिलाहरुलाई देवानी विषयहरुमा पुरुष सरहको कानूनी क्षमता प्रदान गरी सो क्षमताको उपयोग गर्न समान अवसर प्रदान गर्नेछन् । उनीहरुले खासगरी महिलाहरुलाई करार गर्न र सम्पत्तिको संचालन गर्न पाउने समान अधिकार प्रदान गर्नुका साथै अदालत तथा न्यायाधिकरणका कार्यविधिहरुका सबै तहहरुमा महिलाहरुलाई समान रुपले व्यबहार गर्नेछन् ।

३. महिलाको कानूनी क्षमतालाई नियन्त्रण गर्ने उद्देश्य भएका सबै करारहरु तथा कानूनी प्रभाव भएका कुनै पनि किसिमका अन्य निजी लिखतहरु निष्प्रभावी र बदर भएको मानिने कुरामा पक्ष राष्ट्रहरु मन्जूर गर्दछन् ।

४. व्यक्तिहरुको आवतजावत सम्बन्धी कानून तथा आफनो आवास र बसोबास छान्न पाउने स्वतन्त्रताका सम्बन्धमा पक्ष राष्ट्रहरुले महिला तथा पुरुषलाई समान अधिकार प्रदान गर्नेछन् ।

**धारा १६**

१. पक्ष राष्ट्रहरुले विवाह तथा पारिवारिक सम्बन्धसँग सम्बन्धित सबै बिषयहरुमा महिला विरुद्धको भेदभाव उन्मूलन गर्न सम्पूर्ण उपयुक्त उपायहरु अवलम्वन गर्ने र खासगरी महिला र पुरुषको समानताका आधारमा निम्नलिखित अधिकारहरु सुनिश्चित गर्नेछन्ः

(क) विवाह गर्ने समान अधिकार,

(ख) स्वतन्त्र रुपले वर रोज्ने तथा उनीहरुको स्वतन्त्र र पूर्ण सहमतिमा मात्र विवाह गर्ने समान अधिकार,

(ग) विवाह पश्चात र विवाह विच्छेदको अवस्थामा समान अधिकार तथा उत्तरदायित्वहरु,

(घ) उनीहरुको वैवाहिक स्थिति जेसुकै भए तापनि, उनीहरुका बालबालिकासँग सम्बन्धित कुराहरुमा बाबुआमाको समान अधिकार तथा उत्तरदायित्वहरु सबै अवस्थाहरुमा बालबालिकाको हीत नै सर्वोपरी हुनेछ,

(ङ) आफ्ना बालबालिकाको संख्या र जन्मान्तरका विषयमा स्वतन्त्र एवं जिम्मेवारीपूर्वक निर्णय गर्ने अधिकारहरु तथा उनीहरुलाई यी अधिकारहरु प्रयोग गर्न सक्षम बनाउन जानकारी, शिक्षा तथा साधनमा पहुंच प्राप्त गर्ने अधिकारहरु,

(च) बालबालिकाको संरक्षकत्व, हेरचाह, न्यासधारण र धर्मपुत्र वा धर्मपुत्री ग्रहण गर्ने सम्बन्धमा वा राष्ट्रिय कानूनमा यी अवधारणाहरु विद्यमान भएका यस्तै संस्थाहरुको सम्बन्धमा समान अधिकार तथा उत्तरदायित्वहरु सबै अवस्थाहरुमा बालबालिकाको हीत नै सर्वोपरी हुनेछ,

(छ) पारिवारिक नाम, पेशा र व्यबसाय छनौट गर्ने अधिकार लगायत पति र पत्नीको समान व्यक्तिगत अधिकारहरु,

(ज) सम्पत्तिको स्वामित्व, प्राप्ती, व्यवस्थापन, संचालन, भोगचलन र वेचबिखनका सम्बन्धमा, निशुल्क वा मूल्यवान प्रतिफल वापत जे भएपनि पति र पत्नी दुबैको समान अधिकार।

२. बालकको वैवाहिक वाग्दान र बाल विवाहको कानूनी मान्यता हुनेछैन र विवाहको लागि न्यूनतम उमेर तोक्ने तथा विवाहलाई सरकारी पञ्जिकाधिकारी समक्ष अनिवार्य रुपले दर्ता गर्नुपर्ने कानूनी व्यवस्था लगायतका सबै आवश्यक कारवाही गरिनेछ।

## भाग ५

### धारा १७

१. प्रस्तुत महासन्धिको कार्यान्वयनमा भएको प्रगतिको बारेमा विचार गर्ने प्रयोजनकालागि, महिला विरुद्धको भेदभाव उन्मूलन सम्बन्धी एक समिति (यसपछि "समिति" भनिएको) गठन गरिने छ। यस समितिमा महासन्धि लागू हुँदाका वखत अठार जना र पैतिसौं पक्ष राष्ट्रले महासन्धिको अनुमोदन वा सम्मिलन गरेपछि तेईस जना उच्च नैतिक प्रतिष्ठा तथा महासन्धिले समेटेको क्षेत्रमा दक्षता भएका विशेषज्ञहरु रहनेछन्। समानुपातिक भौगोलिक वितरण पद्दति अनुसार तथा

विभिन्न सभ्यताहरुको एवं प्रमुख कानूनी प्रणालीहरुको प्रतिनिधित्व हुने गरी पक्ष राष्ट्रहरुले आफ्ना नागरिकहरु मध्येबाट यी विशेषज्ञहरु निर्वाचित गर्नेछन् र तिनीहरुले व्यक्तिगत हैसियतमा सेवा गर्नेछन् ।

२. समितिका सदस्यहरु पक्ष राष्ट्रहरुबाट मनोनित व्यक्तिहरुको सूचिबाट गोप्य मतदानको प्रकृयाबाट निर्वाचित हुनेछन् । प्रत्येक पक्ष राष्ट्रले आफ्ना नागरिकहरुमध्येबाट एक जना व्यक्तिको मनोनयन गर्न सक्नेछ ।

३. प्रस्तुत महासन्धि लागू भएको मितिले ६ महिना पछि प्रारम्भिक निर्वाचन हुनेछ । प्रत्येक निर्वाचनको मिति भन्दा कम्तिमा तीन महिना अगावै संयुक्त राष्ट्र संघको महासचिवले पक्ष राष्ट्रहरुलाई आ-आफ्ना मनोनयनहरु दुई महिनाभित्र पेश गर्न आव्हान गर्दै पत्र पठाउनेछन् । महासचिवले त्यसरी मनोनित सबै व्यक्तिहरुको वर्णानुक्रम अनुसारको र निजहरुलाई मनोनयन गर्ने पक्ष राष्ट्रहरुको नाम समेत जनिएको सूची तयार पारी सो सूची पक्ष राष्ट्रहरुलाई पठाउने छन् ।

४. संयुक्त राष्ट्र संघको प्रधान कार्यालयमा महासचिवले आयोजना गरेको पक्ष राष्ट्रहरुको बैठकमा समितिका सदस्यहरुको निर्वाचन हुनेछ । यस वैठकमा पक्ष राष्ट्रहरुमध्ये दुई तिहाईको उपस्थितिलाई गणपूरक संख्या मानिनेछ । वैठकमा उपस्थित भई मतदान गर्ने पक्ष राष्ट्रहरुका प्रतिनिधिहरुको स्पष्ट बहुमत प्राप्त गरी सबैभन्दा बढी मत प्राप्त गर्ने मनोनित व्यक्तिहरु समितिको सदस्यमा निर्वाचित भएको मानिने छन् ।

५. समितिका सदस्यहरु चार बर्षको अवधिका लागि निर्वाचित हुनेछन् । तर पहिलो निर्वाचनमा निर्वाचित सदस्यहरुमध्ये नौंजना सदस्यहरुको पदावधि दुई बर्षमा समाप्त हुनेछ । पहिलो निर्वाचन भएको लगत्तै पछि समितिका अध्यक्षले यी नौ जना सदस्यहरुको नाम गोला प्रथाद्वारा छनौट गर्नेछन् ।

६. पैंतीसौं अनुमोदन वा सम्मिलन भएपछि यस धाराका प्रकरणहरु २, ३ र ४ का व्यबस्थाहरु अनुसार समितिका पाँच जना अतिरिक्त सदस्यहरुको निर्वाचन हुनेछ । यस अवसरमा निर्वाचित अतिरिक्त सदस्यहरुमध्ये दुई जना सदस्यहरुको पदावधि दुई बर्षमा समाप्त हुनेछ । समितिका अध्यक्षले यी दुई जना सदस्यहरुको नाम गोला प्रथाद्वारा छनौट गर्नेछन् ।

७. आकस्मिक रिक्त पदको पूर्ति गर्नका लागि, जुन पक्ष राष्ट्रको विशेषज्ञले समितिको सदस्यताको रिक्तता सिर्जना गरेको हो सोही पक्ष राष्ट्रले समितिको स्वीकृतिको अधिनमा रही आफ्ना नागरिकहरु मध्येबाट अर्को विशेषज्ञको नियुक्ति गर्नेछ ।

८. समितिका सदस्यहरुले समितिको उत्तरदायित्वको महत्वलाई ध्यानमा राखी महासभाले निर्धारण गरेको शर्त तथा अवस्थाहरु अनुसार महासभाबाट स्वीकृत भए बमोजिम संयुक्त राष्ट्र संघको श्रोतबाट पारिश्रमिक प्राप्त गर्नेछन् ।

९. संयुक्त राष्ट्र संघका महासचिवले प्रस्तुत महासन्धि अन्तर्गत समितिले गर्नुपर्ने काम प्रभावकारी रुपले सम्पादन गर्नको लागि आवश्यक कर्मचारी र सुविधाहरु उपलब्ध गराउने छन् ।

**धारा १८**

१. प्रस्तुत महासन्धिका व्यबस्थाहरुलाई कार्यान्वयन गर्न आफूले अवलम्वन गरेका कानूनी, न्यायिक, प्रशासनिक वा अन्य उपायहरु तथा सो सम्बन्धमा भए गरेको प्रगति सम्बन्धी प्रतिवेदन समितिको विचारार्थ संयुक्त राष्ट्र संघको महासचिव समक्ष निम्नलिखित समयमा पेश गर्न पक्ष राष्ट्रहरु कवूल गर्दछन् :

(क) सम्बन्धित राष्ट्रको हकमा महासन्धि लागू भएको मितिले एक बर्ष भित्र,

(ख) त्यसपछि, कम्तिमा प्रत्येक चार चार बर्षमा र त्यसपछि, समितिले अनुरोध गरेको समयमा ।

२. प्रतिवेदनहरुमा प्रस्तुत महासन्धि अन्तर्गतका दायित्वहरु वहन गर्नमा अवरोध गर्ने तत्व तथा व्यबधानहरु समेत उल्लेख गर्न सकिने छ ।

**धारा १९**

१. समितिले आफ्नो कार्यविधि सम्बन्धी नियमहरु आफै निर्धारण गर्नेछ ।

२. समितिले दुई बर्षको पदावधिकोलागि आफ्ना पदाधिकारीहरु निर्वाचित गर्नेछ ।

**धारा २०**

१. प्रस्तुत महासन्धिको धारा १८ अनुसार प्रस्तुत गरिएका प्रतिवेदनहरु उपर विचार विमर्श गर्नको लागि समितिको वैठक प्रत्येक बर्ष सामान्यतया वढीमा दुई हप्ताको अवधिको लागि बस्नेछ ।

२. समितिको वैठक सामान्यतया संयुक्त राष्ट्र संघको प्रधान कार्यालयमा वा समितिले निर्धारण गरेको अन्य कुनै उपयुक्त स्थानमा बस्नेछ ।

**धारा २१**

१. समितिले आफूले गरेको कामको सम्बन्धमा वार्षिक प्रतिवेदन आर्थिक तथा सामाजिक परिषद् मार्फत हरेक बर्ष संयुक्त राष्ट्र संघको साधारण सभामा पेश गर्नेछ र पक्ष राष्ट्रहरुबाट प्राप्त प्रतिवेदनहरु तथा सूचनाहरुको जाँचबुझको आधारमा समितिले आफ्नो सुझाव दिन र सामान्य सिफारिसहरु पेश गर्न सक्नेछ । त्यस्ता सुझाव तथा सामान्य सिफारिसहरु र तत्सम्बन्धमा पक्ष राष्ट्रहरुबाट कुनै टिकाटिप्पणीहरु प्राप्त भएको भए सो समेत प्रतिवेदनमा संलग्न गरिनेछ ।

२. संयुक्त राष्ट्र संघका महासचिवले समितिका प्रतिवेदनहरु महिलाको स्थिति सम्बन्धी आयोग समक्ष जानकारीको निमित्त पठाउने छन् ।

**धारा २२**

विशिष्टिकृत निकायहरुले आफ्नो कार्यक्षेत्रभित्र पर्ने प्रस्तुत महासन्धिका व्यबस्थाहरुको कार्यान्वयनका सम्बन्धमा गरिने विचारविमर्शमा आफ्नो प्रतिनिधित्व गर्न प्रतिनिधिहरु पठाउन पाउनेछन् । समितिले विशिष्टिकृत निकायहरुको कार्यक्षेत्रभित्रका बिषयहरुका सम्बन्धमा महासन्धिका व्यबस्थाहरुको कार्यान्वयनका सम्बन्धमा प्रतिवेदन पेश गर्न तिनीहरुलाई आमन्त्रण गर्न सक्नेछ ।

**भाग ६**

**धारा २३**

प्रस्तुत महासन्धिका कुनै पनि कुराले पुरुष र महिलाका बीचमा समानता कायम गर्न बढी सहायक हुने निम्नलिखित लिखतहरुमा रहेका कुनै पनि व्यबस्थाहरुलाई प्रभाव पार्ने छैन:

(क) कुनै पक्ष राष्ट्रको कानून, वा

(ख) सो राष्ट्रका हकमा लागू रहेको अन्य कुनै अन्तर्राष्ट्रिय महासन्धि, सन्धि वा सम्झौता ।

**धारा २४**

प्रस्तुत महासन्धिद्वारा मान्यता दिईएका अधिकारहरुको पूर्ण प्राप्तितर्फ लक्षित सबै आवश्यक उपायहरु राष्ट्रिय स्तरमा अवलम्बन गर्न पक्ष राष्ट्रहरु कबूल गर्दछन् ।

**धारा २५**

१. प्रस्तुत महासन्धि सबै राष्ट्रहरुबाट हस्ताक्षर हुनका लागि खुला रहनेछ ।

२. संयुक्त राष्ट्र संघका महासचिवलाई प्रस्तुत महासन्धिको अभिलेख अधिकारी (डिपोजिटरी) को रुपमा तोकिएको छ ।

३. प्रस्तुत महासन्धिलाई अनुमोदन गर्नु पर्नेछ । अनुमोदनका लिखतहरु संयुक्त राष्ट्र संघका महासचिव समक्ष दाखिला गर्नुपर्नेछ ।

४. प्रस्तुत महासन्धि सबै राष्ट्रहरुबाट सम्मिलन हुनका लागि खुला रहनेछ । सम्मिलनको लिखत संयुक्त राष्ट्र संघका महासचिव समक्ष दाखिल भएपछि सम्मिलन प्रभावकारी हुनेछ ।

**धारा २६**

१. कुनै पक्ष राष्ट्रले कुनै पनि समयमा संयुक्त राष्ट्र संघका महासचिवलाई सम्बोधन गरी लिखित सूचना दिएर प्रस्तुत महासन्धिको संशोधनकालागि अनुरोध गर्न सक्नेछ ।

२. संयुक्त राष्ट्र संघको महासभाले यस्तो अनुरोधको सम्बन्धमा कुनै कदम चाल्नु पर्ने भए सो सम्वन्धमा निर्णय गर्नेछ ।

**धारा २७**

१. अनुमोदन वा सम्मिलनको बीसौं लिखत संयुक्त राष्ट्र संघका महासचिव समक्ष दाखिला भएको मितिले तीसौं दिनदेखि प्रस्तुत महासन्धि लागू हुनेछ ।

२. अनुमोदन वा सम्मिलनको बीसौं लिखत दाखिला भएपछि प्रस्तुत महासन्धिको अनुमोदन वा सम्मिलन गर्ने प्रत्येक राष्ट्रको हकमा सो राष्ट्रले आफनो अनुमोदन वा सम्मिलनको लिखत दाखिला गरेको मितिले तीसौं दिनदेखि प्रस्तुत महासन्धि लागू हुनेछ ।

**धारा २८**

१. संयुक्त राष्ट्र संघका महासचिवले अनुमोदन वा सम्मिलन गर्दाका वखत राष्ट्रहरुले राखेका आरक्षणका पाठहरु प्राप्त गरी सबै राष्ट्रहरुलाई उपलब्ध गराउने छन् ।

२. प्रस्तुत महासन्धिको लक्ष्य एवं उद्देश्यसँग मेल नखाने आरक्षणलाई अनुमति दिईने छैन ।

३. संयुक्त राष्ट्र संघका महासचिवलाई सम्बोधन गरी सो प्रयोजनको सूचना दिएर कुनै पनि समयमा आरक्षण फिर्ता लिन सकिने छ । महासचिवले सोको जानकारी सबै राष्ट्रहरुलाई दिनेछन् । यस्तो सूचना प्राप्त भएको मितिदेखि लागू हुनेछ ।

## धारा २९

१. प्रस्तुत महासन्धिको व्याख्या वा प्रयोगको सम्बन्धमा दुई वा सो भन्दा बढी पक्ष राष्ट्रहरु बीच उत्पन्न विवादको समाधान वाताबाट हुन नसकेमा सो विवाद निजहरु मध्ये कुनै एकको अनुरोधमा मध्यस्थता समक्ष पेश गरिनेछ । मध्यस्थताकोलागि अनुरोध गरेको मितिले छ महिनाभित्र मध्यस्थताको गठनका सम्बन्धमा पक्षहरु सहमत हुन नसकेमा ती पक्षहरु मध्ये कुनै एक पक्षले अन्तर्राष्ट्रिय न्यायालयको विधान बमोजिम अनुरोध गरी सो विवाद अन्तर्राष्ट्रिय न्यायालय समक्ष पेश गर्न सक्नेछ।

२. प्रस्तुत महासन्धि हस्ताक्षर, अनुमोदन एवं सम्मिलन गर्दाको समयमा प्रत्येक पक्ष राष्ट्रले यस धाराको प्रकरण १ आफनो हकमा लागू नहुने घोषणा गर्न सक्नेछ । यस्तो आरक्षण राख्ने पक्ष राष्ट्रका सम्बन्धमा अन्य पक्ष राष्ट्रहरुको हकमा सो प्रकरणको व्यबस्था वाध्यात्मक हुने छैन ।

३. यस धाराको प्रकरण २ बमोजिम आरक्षण राखेको कुनै पनि पक्ष राष्ट्रले संयुक्त राष्ट्र संघका महासचिवलाई सूचना दिएर कुनै पनि समयमा त्यस्तो आरक्षण फिर्ता लिन सक्नेछ।

## धारा ३०

अरवी, चिनिया, अंग्रेजी, फ्रान्सेली, रसियाली र स्पेनी भाषाका प्रतिहरु समान रुपले प्रामाणिक भएको प्रस्तुत महासन्धि संयुक्त राष्ट्र संघका महासचिव समक्ष दाखिला गरिने छ ।

यस कुराको प्रमाणस्वरुप विधिवत अधिकार प्राप्त देहायका हस्ताक्षरकारीहरुले प्रस्तुत महासन्धिमा हस्ताक्षर गरेका छन् ।